# स्वयम्भू

एउटा "सत्य हो" ग्रन्थ



'सत्य हो'
पो. बो. बक्स ३८४३

# समर्पण

यो पुस्तक मन्दिर र धार्मिक मूर्तिहरूको नवीकरण, सम्भार र संरक्षण प्रति समर्पित गरिएको छ । यसबाट हामीहरू आफूभित्र रहेको ज्योतिको चेतना पाउन सकौं तथा यसको पोषण, संरक्षण र अनुगमन गर्न सकौं भन्ने अपेक्षा राखिएको छ । हाम्रा राष्ट्रिय धार्मिक सम्पत्तिहरूको क्षय हाम्रो समाजका अङ्ग बनिरहेका व्यक्तिहरूको आन्तरिक क्षयको प्रतीक हो भनेर हामीहरूले बोध गर्न सकौं तथा यस्तो बोध गर्दा हामीहरू लज्जाउन जानी आफ्नो आन्तरिक र बाह्य नवीकरण गर्न सकौं भन्ने भावना लिऔं ।

यो र अरू 'सत्य हो' प्रकाशन र उद्यमहरूबाट हुने लाभ नेपालस्थित मन्दिर र मूर्तिहरूको नवीकरण, सम्भार र संरक्षणको लागि खर्च गरिने छ ।

'सत्य हो' ग्रन्थ प्रकाशनहरू

१. कर्मराज महाविहार

२. अनन्तपुर

३. घण्टा

४. वज्र

५. घण्टा

६. प्रतापपुर

७. नागपुर

८. वसुन्धरा मन्दिर र वसुपुर

९. स्वयम्भू स्तूप

१०. आगम गृह

११. हारती मन्दिर

१२. वायुपुर

१३. शान्तिपुर

१४. अग्निपुर

१५. देवावतार बोधिसत्व

१६. अन्तर्राष्ट्रिय बौद्ध पुस्तकालय

१७. देवधर्म महाविहार

१८. मूर्ति सङ्ग्रहालय

१९. आनन्दकुटी

२०. पुराणस्वयम्भू

२१. पर्वस्थान

२२. मैत्री गुम्बा र मोटर गाडी पार्क गर्ने ठाउँ

२३. पश्चिमी चैत्य

२४. मञ्जुश्री चैत्य

# परिचय

काठमाडौं उपत्यकामा सुपरिचित भएका असंख्य पुनित वस्तुहरूमध्ये एक कुनै वस्तु पनि सांस्कृतिक महत्वमा स्वयम्भूत, स्वयन् अस्तित्वमा आएको स्वयम्भूको तुलनामा आउन सक्दैन। आन्तरण धरिका धार्मिक स्थलहरूमा पशुपति जस्तै स्वयम्भू सर्वाधिक ख्यातिप्राप्त बौद्ध थलो मात्र नभई पवित्रतम स्थल पनि हो। यसको पूजा गर्न आउने उपासक–उपासिकालाई राजा वृष देवका धार्मिक कार्यहरूबारे केही कुरा थाहा नभए पनि तिनीहरू यो स्तूप अतीव प्राचीन र चमत्कारपूर्ण छ भनी स्वयम्भू पुराणमा वर्णित कथासित परिचित छन्। किन-भने स्वयम्भूले मनुष्यहरू वा पशुपतिसम्म पनि बसोबास गर्नुभन्दा अगाडि खाल्डोलाई टम्म भरिराख्ने दह– कालिह्रद अथवा नाग वासको माझमा आफूलाई प्रकट गर्न रुचाए। डेढ फीट अग्लो एउटा ज्वाला वा वैकल्पिक रूपले एउटा स्वच्छ मूर्ति– स्वयम्भू ज्योतिश्वर रथचक्र जत्रो एउटा कान्तिमय कमल निस्कन भयो। माथितिर हीरैं हीरा, तलतिर मोती मोती र बीचमा पन्ना पन्ना भएको यो कमल फूलमा दश हजार स्वर्ण पत्र थिए। यसका पराग रत्नैं रत्नको थियो। यसका पराग–केशर सुनको र डाँठ (काण्ड) हरू नीलमका थिए। तर मञ्जुश्री बोधिसत्वले यो दह भयङ्कर जलचरहरूले परिपूर्ण भएको एवं स्वयम्भू स्थल प्रायः दुर्गम्य भएको देखेर समदर्श आफ्नो तलवारले खाल्डो वरिपरिको डाँडो फोरेर पानी निकाले। बोधिसत्व मञ्जुश्रीले कलियुगका दुष्ट मनुष्यहरूले स्वयम्भूका जुहारातहरू चोरी उनको नामावलीलाई नष्ट पार्लान् भन्ने डरले यसलाई ढुङ्गाले छोपेर देख्न नसकिने तुल्याए। आखिर यस पवित्र स्थलमा राजाबाट भिक्षु भएका शान्तश्री अर्थात् शान्तिकराचार्य आइपुगे जसले त्यस लुप्त स्वयम्भूमाथि सुवर्ण चक्रयुक्त रत्नजडित स्तूप निर्माण गरे।

आजकाल हामीहरूले देख्ने चैत्य शान्ति कराचार्य वा राजा वृषदेवले बनाएको स्तूप होइन। आजको स्वयम्भू चैत्य त्यस डाँडोको चुचुरोमा निर्मित कैयौं स्तूपहरूको लामो क्रमको अन्तिम कृति हो। समय, भुकम्प युद्ध र उपेक्षा-का मारहरू खप्दै रहेको स्वयम्भू स्तूपको जीर्णोद्धार कैयन पटक भइसकेकोछ तथा बौद्ध धर्ममा विकसित हुँदै आएका दर्शनहरूलगित बढी विहारजस्तो बन

यमा बर्जित गरेको छ । तर मूल कृति चाहिं विभिन्न प्रकारको निर्माणहरूको मुनि पर्न रहेको छ । यूर पतोलमा प्रमुख जीर्णोद्धारहरू भए । तर केवल पौराणिक कथा बाहेक तिनको कुनै इतिहास छोडिएको छैन । तर शिलापत्र-हरूमा अङ्कित गरिएको इतिहासमा लिच्छवि समयमा वि० सं० ११८६ मा भए-का प्रमुख मरम्मतहरूको लिखत उपलब्ध छ । फेरि राजा अर्जुन मल्ल र उन-का उत्तराधिकारी बस्ने आकांक्षा राख्ने स्थिति मल्लको अनुमति लिएर काठमाडौंका महापात्रले मुसलमानहरूले स्वयम्भू चैत्य ध्वस्त पारेको पच्चीस वर्ष-पछि वि० सं० १४२६ मा यसको पुनर्निर्माण गरेका थिए । फेरि वि० सं० १६२२ मा पाटनका महापात्र नर सिंह, उध्दव सिंह र पुरन्दर सिंहले गजूर मरम्मत गरे । तीस वर्षपछि राजा शिव सिंहले बीच भागको मूल खम्बा फेरी स्तूपको जीर्णोध्दार गरे । वि० सं० १६७८ मा तिब्बतबाट आएका वरिष्ठ लामा श्यामापाले राजा लक्ष्मी नरसिंहको राज्य कालमा यसको मरम्मत गरे । फेरि वि० सं० १८०८ मा आएका एक जना तिब्बतीले राजा जयप्रकाश मल्लको खर्चमा यसको जीर्णोध्दार गराए । बीच भागको ठूलो खम्बा चाहिं राजा पृथ्वीनारायण शाहको समयमा फेरियो । यो जीर्णोध्दार कार्यमा ३६ कि० ग्रा० सुन, ३,५०० किलो तामाको खपत भयो र शुध्दिकरण अनुष्ठानमा पूरै कस्तूरी खर्च भयो । वि० सं० १८७३ मा आएको भयङ्कर हुरीले स्वयम्भू चैत्यको मूल खम्बा नै भाँचिदियो । दश वर्षसम्म यसको मर्मत भएन । अनि स्तूपको गर्भ दुई पर्याक गरी काटेर बीचको मूल खम्बा झिकियो । नयाँ खम्बा राखी गर्भ फेरि ईंटले बनाइयो । शिलापत्रहरूमा अङ्कित भएअनु-सार तुलनात्मक रूपले आधुनिक समयमा भएका प्रमुख जीर्णोध्दारहरूको सूची मात्र यहाँ दिइएको हो । लिखत नभएका मरम्मत र जीर्णोध्दारहरू कता कता बढी संख्यामा हुन सम्भव छ ।

स्वयम्भूको यो प्रस्तुत इतिहास 'सत्य हो ग्रन्थ प्रकाशनहरू'– द्वारा प्रकाशित अंग्रेजीको 'स्वयम्भू ऐतिहासिक सचित्र पत्रिका'– बाट लिइएको हो । यसमा दिइएका जानकारीहरू अधिकांश रूपले श्री हेमराज शाक्यको नेवारीमा लेखिएको "श्री स्वयम्भू महाचैत्य" शीर्षक ठूलो ग्रन्थबाट (जुन अंशको अंग्रेजीमा अनुवाद श्री न्हुछे बहादुर बज्राचार्यबाट गरिएको छ) र 'मञ्जुश्री चैत्यको अंश श्री भुवनलाल प्रधानको अंग्रेजीमा लेखिएको "स्वयम्भू" शीर्षक पुस्तकबाट लिइएका हुन् । प्रस्तुत कृतिको नेपालीमा उल्था गर्ने सहयोग पनि श्री प्रधानबाट प्राप्त भएको हो ।

धर्ममा साथ दिने

रिचर्ड जोसेफसन

# "स्वयम्भू महाचैत्य"-को उत्पत्ति

स्वयम्भू उपत्यकाको उत्पत्ति एवं यसको आवादी र प्रथम नगर राजगृहनको स्थापनाको वृत्तान्त स्वयम्भू महाचैत्य सम्बन्धी प्रागैतिहासिक पुराणहरूमा आधारित छ ।

एशिया महाद्वीपमा संस्थापित सबै चैत्य र स्तूपहरूमा स्वयम्भू महाचैत्य एउटा प्राचीनतम कृति हो । यो चैत्य आफ्नो सार्थक र अनुपम कलात्मक रचनाहरूको कारणले विलक्षण बनेको छ । यो नेपालको बौद्ध परम्पराको केन्द्र बिन्दु हो ।

यो उपत्यका सत्य युगमा एउटा विशाल तालको रूपमा थियो र यहाँ कर्कोटक, तक्षक र कुलिक जस्ता पौराणिक नागहरू बस्दथे । यो दह कालिह्रद-को नाउँले विख्यात थियो र समय समयमा बुद्ध, बोधिसत्व, ऋषिमुनि, योगी, देवदेवीको साथै अरू स्वर्गीय जीवात्माहरू यहाँ आई यहाँको जलमा स्नान गर्दथे ।

एक दिन विपश्वी बुद्ध यहाँ आई जामाचो शिखरबाट तलतिरको दृश्य नियाल्न लागे । यिनले त्यस दहमा पद्मबीज रोपेका थिए भनिन्छ । यही पद्म-बीजबाट सहस्र दल भएको एउटा कमलको फूल फुल्यो । यो कमलको फूलबाट अटल ज्योतिमय रश्मि श्री स्वयम्भू ज्योति रूप प्रकट भयो । यो स्वयम्भू ज्योति रूपबाट निसृत भएका पञ्च रश्मि प्रत्येकमा एक एक गरी पाँच तथागत – वैरोचन अक्षोभ्य, रत्नसम्भव, अमिताभ र अमोघ सिद्धिको प्रादुर्भाव भयो ।

स्वयम्भू ज्योतिरूप प्रकट भएको कुरा सुनेर श्री शिखी तथागत अरुण नगरबाट यहाँ आई ध्यानचो शिखरबाट श्री स्वयम्भू ज्योति रूपको दर्शन गरे । लामो समय बितेपछि विश्वभू तथागत यहाँ आई फूलच्चो शिखरबाट स्वयम्भू ज्योति रूपको दर्शन गरे । त्यसपछि महामञ्जुश्री महाचीनबाट यहाँ आए । उनी

कोशा महामण्डप गिरि (भाक्ताउँको नगरकोट) मा गए । यही टाकुरामा पद्मासन कसेर मञ्जुश्रीले मानिसहरू स्वयम्भू ज्योतिरूपसम्म पुगी दर्शन गर्न सकिने गर्न उपत्यकाको तालबाट पानी कसरी निकाल्न सकिएला भनेर गौर गर्न लागे । अनि यिनले उत्तरमा गोकर्ण डाँडो, मध्य भागमा आर्यघाट र दक्षिणमा चोभार डाँडोमा खाँद बनाई कोबुवा डाँडोबाट बहको पानी दक्षिण – दक्षिण भारत तिर पठाए । त्यसपछि यिनले टौदह, धनदह र द्वादश तीर्थको निर्माण गरे जहाँ यस खाल्डोको दहमा बसोबास गरिआएका नागहरूले आश्रय पाए । पद्म बीज रोपिए-को ठाउँ धर्मोदया गुह्येश्वरी (पालाजु स्थित पुराण गुह्येश्वरी) कहलियो । अनि यिनले 'मञ्जुपत्तन' भन्ने नाउँले पहिलो बस्ती बसाले । राजा विना नगरीय आबादीको व्यवस्था गर्न सम्भव नहुने सम्झी मञ्जुश्रीले आफ्ना एक जना शिष्य धर्माकरलाई मञ्जुपत्तनको राजा बनाए । त्यसपछि यिनले बौद्ध सभ्यताको संस्थापन गरी यहाँका प्रथम निवासीहरूलाई नागरिक जीवन, शिलाविद्या र दशकर्म विधि जस्ता परम्परागत बौद्ध सांस्कृतिक परिपाटीहरूमा दीक्षित गरे । मञ्जुश्री-लाई नेपालका संस्थापक मात्र होइन विद्याको देवता – वागीश्वर विद्यापति पनि भनेर पूजा गर्नुको कारण यही हो । भिक्षु गुणाकर र शान्तिकराचार्यले मञ्जुश्री-को सम्मानमा पर्वस्थानको चुचुरोमा एउटा स्मारिका चैत्यको स्थापना गरे जुन आजसम्म विद्यमान छ । मञ्जुश्री पछि स्वयम्भू ज्योतिरूपको दर्शन गर्न श्री क्रकुच्छन्द तथागत क्षेमावती देशबाट आइपुगे । यिनी शिपुच्चो गए । त्यहाँ यिनले आफना चेला गुणध्वज ब्राह्मण, अभयानन्द क्षेत्री र अरूहरूलाई प्रव्रजित गर्न खोजे । तर त्यहाँ पानी उपलब्ध नभएकोले यिनले आफ्नो वाक् शक्तिले एउटा नदीको उद्भव गराए । यसरी पानी उपलब्ध भयो । यिनको वाक्‌बाट उद्भूत भएको हुनाले यो नदीको नाउँ वाक्‌मती (आजकाल बागमती) रह्यो । क्रकुच्छन्द तथागत पछि कनकमुनी शोभावती नगरबाट आई स्वयम्भू ज्योतिरूपको दर्शन गरे । त्यसपछि काश्यप तथागत स्वयम्भू ज्योतिरूपको दर्शन गर्न काशी (वर्तमान वाराणसी, बनारस) बाट आए । घर फर्की उनले वाराणसीमा स्वयम्भू ज्योति-रूप बारे प्रचार गर्न लागे । काश्यप तथागतबाट स्वयम्भू ज्योतिरूपको वर्णन सुनेर गौड देशका राजा प्रचण्ड देव पनि काठमाडौं उपत्यकामा आई स्वयम्भू ज्योति रूपको दर्शन गरे । यिनी स्वयम्भू ज्योतिरूप देखेर अतीव प्रभावित भए । कलियुगमा मानिसहरूले स्वयम्भू ज्योतिरूपलाई बिटुल्याउलान् भन्ने विचार राखी यिनले त्यो महान् शाश्वत स्वयम्भू ज्योति माथि चैत्य बनाएर छोप्ने अठोट गरे । अनि यिनले मञ्जुश्रीका महाभक्त ठूला विद्वान् पं. भिक्षु गुणाकर सित प्रव-ज्याको निम्ति याचना गरे । उपसम्पदा पाएपछि यिनी आचार्याभिषेकको संस्कार विधिद्वारा आचार्यको उच्च पदमा दीक्षित भए । सर्वप्रथम उपसम्पदा पाउँदा

यिनको नाम शान्ति श्री भिक्षु रहेको थियो । उपरान्त त्यसको आचार्याभिषेक पछि यिनी शान्तिकराचार्य कहिए ।

शान्तिकराचार्य भएपछि यिनले आवश्यक संस्कार विधिको अनुष्ठान-द्वारा – स्वयम्भू ज्योतिलाई छोपेर महाचैत्य बनाए । यसको लगत्तै पछि यिनले शान्तिपुर, वसुपुर, नागपुर, वायुपुर र अग्निपुरको निर्माण गरे । यी पाँच 'पुर' (बस्ती) पृथ्वी, आकाश, वायु, जल, अग्नि भनिने पञ्चतत्वका प्रतिक हुन । छ लोक (षड्गति) का प्रतिक छ वटा भैरवको संस्थापन गर्ने पनि यिनी नै हुन् भनिन्छ । आफ्नो इच्छा अनुसारको कार्य सबै सम्पन्न गरेपछि यिनले शान्तिपुर भित्र प्रवेश गरे जहाँ यिनी चिन्तामणि ज्योतिले दीप्ति छर्दै 'आध्यात्मिक' समाधिमा आसीन भइरहेका छन् ।

तदुपरान्त स्वयम्भू ज्योतिरूप छोपियो तथा त्यस ज्योतिरूपलाई ढाक्ने महाचैत्य मात्र दृष्टिगोचर भएको छ । यसपछि शाक्यमुनि बुद्ध आई स्वयम्भू महाचैत्यको दर्शन गरे । यिनले स्वयम्भू शिखर स्थित गोपुच्छ पर्वतमा भावी बुद्ध मैत्रेय बोधिसत्वलाई स्वयम्भू ज्योतिरूपबारे उपदेश दिए । यो पर्वतस्थान धर्मचक्र महाविहार पनि कहिन्छ । यहाँबाट शाक्यमुनि बुद्ध नमुरा (नमो बुद्धाय) मा गए । यिनले त्यहाँ आफ्नो पहिलो जीवनमा भोकाएको बघिनीलाई बचाउन आफ्नै जीवन उत्सर्ग गरेको बारे उपदेश दिए ।

शाक्यमुनि बुद्धले गोपुच्छ पर्वतमा स्वयम्भू ज्योतिरूप बारे उपदेश दिन्को बेला हारती यक्षिणी उपस्थित थिइन् । यिनले स्वयम्भू महाचैत्य, विहार, बौद्ध संस्कृति र बाह्र वर्ष मुनिका केटाकेटीहरूको सेवा र संरक्षण गर्न पाउँ भनी शाक्यमुनि बुद्धसित प्रार्थना गरिन् । हारतीलाई आसन गरिएका मन्दिर स्वयम्भू महाचैत्यको नजीक अवस्थित हुनुको कारण यही हो ।

## 'शान्तीपुर'

अग्निपुरबाट लगभग एक सय गज तलतिरको उत्तरपश्चिम शिखरमा एउटा आयाताकारको भवन अवस्थित छ । जसका तीन तिरका गाह्राहरू अनेकौं मूर्तिहरूले सजिएका खोपा–खोपाले दर्शनीय देखिएका चैत्यहरूले घेरिएका छन् । यो पुर भिक्षु शान्तिकराचार्यको नामबाट 'शान्तिपुर' कहिएको छ । शान्तिकराचार्यले नै राजा गुणकामदेव सित स्वयम्भू – चैत्यको निर्माण गर्न अनुरोध गरेका थिए । उत्कृष्ट गुणहरूले सम्पन्न यी महान् योगी गुरु आजसम्म पनि यही पुरमा जीवित रहेका भनिन्छन् – जुन कि पन्ध्र सय वर्षको समयावधि हुन आउँछ । शान्तिकराचार्य पहिले गौड देश (वर्तमान पश्चिम बंगाल) का राजा प्रचण्ड देव थिए जो काश्यप तथागतबाट स्वयम्भूको माहात्म्य सुनेर

त्यसको दर्शन गर्न यहाँ आएका थिए । आफ्नो राजपाट छोडी नेपालमा आएपछि यिनले मञ्जुश्रीका शिष्य महान् पण्डित भिक्षु गुणाकरमित प्रव्रज्या मागेका थिए । यिनी प्रेतात्माहरूलाई आराधना गर्ने मन्त्र र मण्डलहरूका प्रयोगमा पारङ्गत अतीव उच्चस्तरका तान्त्रिक गुरु सिद्ध भए । यिनले 'आठकाणिक' भनिने दीर्घायु सम्बन्धी समाधि प्राप्त गरे । जसबाट यिनी अपरिमेय आयु पाउन सक्षम भए भनिएको छ । एउटा पौराणिक कथा अनुसार अन्तिम पटक शान्तिपुर भित्र प्रवेश गर्दा यिनले के भनेका थिए भने "काठमाडौं खाल्डोमा एक जना पनि बौद्ध बाँकी नरहेने बेलामा मात्र म बाहिर निस्कने छु ।" यसको मतलब "उपत्यकामा जति भने पनि बौद्ध-हरू भएकाले मेरो आवश्यकता नै आइपर्दैन" भन्ने पनि लगाइन्छ । यो तथ्यको सम्भावित सत्यता सम्बन्धी केही ऐतिहासिक निष्कर्षहरू उपलब्ध छन् जसमध्ये लिखत प्रमाण भएको एउटा शिलालेख राजा प्रताप मल्लको लेख नै हो ।

एघारौं शताब्दीमा राजा गुणकामदेवले राज्य गरिरहेको बेलामा लामो खडेरी परेकोले राजाले शान्तिकराचार्यलाई उपत्यकामा पानी पार्न कुनै उपाय गर्न अनुरोध गरे । तान्त्रिक शक्तिको सहाराले शान्तिकराचार्य नौ वटा नाग राजालाई सपत्नीक उपस्थित गराउन सफल भए । यी नागहरूको सहाराले यिनले खाल्डोभर पानी पारे । उनीहरूलाई बिदावारी गर्नु अगाडि यिनले भावी उपयोगको निम्ति एउटा नागमण्डल लेखि राख्न वाञ्छनीय भएकोले उनीहरू प्रत्येकसंग घुँडको रगत अलिकता मागे । उनीहरूको रगतले यिनले एउटा नाग मण्डल तयार पारे । त्यसपछि शान्तिकराचार्यले त्यो नागमण्डल धाममा देखाउने बित्तिकै पानी पार्ने वाचा ती नागहरूलाई गर्न लगाए । यिनले उक्त पोथा तामाको बट्टामा भित्र थन्काए । त्यसपछि शान्तिकराचार्य फेरि शान्तिपुरको तल्लो तलाको कोठामा समाधिष्ठ हुन गए । यो निवास स्थान शान्तिकराचार्य पहिलोपल्ट समाधिष्ठ हुन भित्र गएको बेलादेखि उप्रान्त बन्द रहिआएको छ र राजा प्रताप मल्लले प्रवेश गरेको अवसर एउटालाई छाडेर अरु कुनै बेलामा कोही पनि यस गुफा भित्र पस्न सकेको छैन ।

एघारौं शताब्दीमा पुनः समाधिष्ठ भए देखि शान्तिकराचार्य सं. १७१५ आषाढसम्म निर्बाध रूपले रहे । यसताका प्रजा वर्गको अनुरोधले गर्दा राजा प्रताप मल्ल गुफा भित्र पसे । यी महान् तान्त्रिक गुरुको कोठामा पुगेपछि राजाले यिनको कङ्काल मात्र जस्तो भए पनि ध्यानमग्न आसनमा बसिरहेको सजीव शरीर देखे । राजाले नागमण्डल लिन चाहेको कुरा बताउँदा यिनले

आफ्नो सामुन्ने माथितिर खुम्चिएको नागको ढुङ्गोतिर हातले इशारा गरे । राजाले त्यो ढुङ्गो बाहिर ल्याई घाममा देखाए । तुरुन्त पानी पऱ्यो । त्यसपछि राजाले ढुङ्गो फिर्ता राख्न लगे । त्यो कोठाबाट बाहिर फर्क आउँदा राजाले ढुङ्गामा परेको आफ्नो छाया शिररहित भएको देखे । त्यसबेला राजाले आफ्नो छाया शिरमुक्त भएमा यस पुण्य स्थलमा वर्षेनी एउटा अमर्फी चढाउने प्रतिज्ञा गरे । अनि उनको छायामा टाउको पनि देखियो । असर्फी चढाउने परम्परा आजसम्म कायम रहि आएकोछ । केवल अहिले राजाले होइन गुठी संस्थानले असर्फी चढाउँदछ । यी राजाले आफैंले लेखेको " वृष्टि चिन्तामणि स्तोत्र " शीर्षक कवितामा शान्तिकराचार्यलाई जीवितै देखेको बारे र उक्त गुफाको बारे पनि वर्णन गरेका छन् ।

यी तान्त्रिक गुरूको सम्बन्धमा हाम्रो चिनो पाँचौं शताब्दीमा राजा वृषदेवको राज्यकालमा स्वयम्भू स्तूपको निर्माण एवं वज्रयानका दिग्गज धर्मगुरु गुणाकरको निर्देशन अन्तर्गत तान्त्रिक विद्याको साधनामा तल्लीन रहे देखि सत्रौं शताब्दीका राजा प्रताप मल्लको राज्यकालसम्मको घतलाग्दो इतिहास पाउँदो ।

## वायपुर

स्वयम्भू ठाकुराको नैऋत्य कोणमा वायु तत्वको प्रतिक गराएर ढिक्को जस्तो एउटा ढुङ्गाको प्रतिमा सानो मन्दिर भित्र स्थापित गरिराखेको देखिन्छ । यो ढुङ्गामा कुनै आकार विशेष नकुँदिएको भए पनि यसको अवस्थिति इँटले बनेको राम्रो मन्दिर भित्र छ । वायुपुर यही हो । भक्तालुहरू मन्दिर भित्र गएर यो वायुतत्वको प्रतिकलाई पूजा उपासना गर्न सक्दछन् । यो वायुतत्वको उपासनाले आँधी-बेहरीका प्रकोपहरू पन्छाउन सकिन्छ भन्ने विश्वास गरिन्छ ।

## अग्नि पुर

स्वयम्भू ठाकुरको वायव्य कोणमा एउटा अण्डाकारको सानो ढुङ्गा भूईमा गाडिएको पाइन्छ । यो ढुङ्गा पोतेर सेतो पारिएको हुन्छ एवं यसमा नाक र तीन ओटा आँखा कालो रङ्गले लेखिएको हुन्छन् । यो अग्नि तत्वको प्रतिक अग्निपुर हो । यो मूर्ति बारिएको छैन ।

## वसुन्धरा मन्दिर

स्वयम्भू ठाकुराको दक्षिणी तर्फमा ईंटले बनाइएको र मानाको पानाले

छाइएको एउटा मन्दिर अवस्थित छ । यस भित्र बाह्र मोटा मूर्ति छन् । देब्रे तिरको छेउको मूर्ति 'वसुन्धरा' को हो । मुख्य मूर्ति यही हो, अरू मूर्तिहरू बुद्ध, देवदेवी र धर्मका रक्षक देवताहरूका हुन् ।

वसुन्धरा पृथ्वी तत्वको प्रतिक देवी हो । भक्तहरू यो देवतालाई खुशी तुल्याउन सके बालीनाली सप्रनेछ भन्ने विश्वासले इसको उपासना गर्दछन् । यो देवताको अस्तित्व बुद्धकाल भन्दा अगाडिको मानिन्छ र अक्सर संस्कृतमा 'कलश' वा 'अन्नपूर्ण' कहिने एउटा भरिभराउ भांडोद्वारा हिन्दू धर्ममा यसको प्रतिनिधित्व गराइन्छ । वसुन्धरा देवीलाई कहिलेकाहीं तीन मोटा मुख– देब्रे तिरको लक्ष्मीको सेतो, दाहिने तिरको कुमारीको रातो र बीचमा वसुन्धराको पहेंलो मुखले मूर्तित गरिन्छ । लक्ष्मी धनसम्पत्तिकी देवी हो र बुद्धभन्दा अगाडि देखि भएको मानिन्छ । कुमारी पनि पूर्व–बुद्धकालीन नै हो र धर्मका संरक्षिका मानिन्छे ।

युनेस्कोद्वारा ई. १९८३ सालमा बनाइएको यो मन्दिरमा छतको भित्री भाग जम्मै ढाक्ने एउटा सुन्दर चंदुवा राखिएको छ । तामाको पाताको यो चंदुवामा शुभ लक्षणका आठ वटा चिन्ह – अष्ट मङ्गल बाहिर उठ्ने गरा कुंडिएका छन् । अधिकांश मूर्तिहरू कालो शालिग्राम ढुङ्गाका हुन् । वसुन्धरा को मूर्ति चाहिं पचास वर्ष जति पुरानो हो ।

## नागपुर

स्वयम्भू मूल चैत्यको उत्तर स्थित एउटा सानो खुला खाल्टोमा छ इन्च चौडाइ भएको आयाताकारको एउटा ढुङ्गा तेर्साइएको छ । यो ढुङ्गा जल-तत्वको प्रतिक हो । भक्तजनहरूले आफ्नो बालीको निम्ति राम्रो वर्षा पाउन यो जल तत्वको देवतालाई खुशी पार्ने आशाले दिनहुँ यस खाल्टोको डिलमा जडि-राखेको इस्पाते डण्डीको बारमा धूपबत्ती बालिरहने दृश्यले यो खाल्टो आकर्षक बन्दछ ।

## मञ्जुश्री चैत्य

स्वयम्भू दुई चुचुरा भएको डांडो हो । पश्चिमी शिखर स्थित गुम्बा-मुनि घुमाउने मानेहरूले घेरिएको एउटा सानो चैत्य छ । यसको निर्माण शान्ति-कराचार्य र भिक्षु गुणाकरले पर्वस्थान कहिने ठाउँमा गरेका थिए । यो चैत्य प्रज्ञाका प्रतिक मञ्जुश्रीको नाउँमा बनाइएको हो । मञ्जुश्री नेपालको संस्थापक

मानिन्छन् । हिमोपाख मञ्जेश्वरी भनिने ठाउँभिर 'मञ्जुपत्तन' कहिएको शहरको स्थापना काठमाडौं उपत्यकामा सर्वप्रथम गरेको श्रेय पनि उनैलाई दिइएकोछ । आफ्नो प्रज्ञारुपी खड्गले पर्वत छेदन गरी प्राक्काल काठमाडौं खाल्डो भइरहेको तत्कालीन ताललाई निकास्ने बोधिसत्व यी नै हुन् ।

मञ्जुश्री चैत्यमा मञ्जुश्रीकै पाइलाका प्रतिक दुईटा ढुङ्गे पादुका छन् । उपासक-उपासिकाहरू दिनदिनै आएर आ-आफ्ना परम्परानुसार यहाँ पूजा-आजा गर्दछन् । यो चैत्य नै स्वयम्भू स्तूपपछिको सर्वाधिक लोकप्रिय बनेकोछ । वर्षको एकचोटी यहाँ वाणी, कला र विद्याकी देवी 'सरस्वती' को पूजा-उपासना गर्न ठूलो मेला लाग्दछ । जनवरीको अन्त्यमा वा फेब्रुअरीको शुरुमा पर्ने पूर्णिमा को दश दिन अगाडिको दिन 'वसन्त पञ्चमी' ( वा 'श्रीपञ्चमी' ) कहिने तिथि अनुसार वसन्त ऋतुको पहिलो दिनको अवसरमा सार्वजनिक पूजाको लागि मञ्जुश्रीका सुनौला पादुकाको प्रदर्शन हुन्छ ।

मञ्जुश्री चैत्यको निर्माण करीब पन्ध्र सय वर्ष अगाडि भएको थियो । त्यसबेला यहाँ सरस्वतीको कुनै मूर्ति थिएन । वज्रयान परम्परा अनुरुप एउटा रित्तो खोपा नै मञ्जुश्रीको प्रतिक थियो । ई. १७०० ताका मात्र त्यस रिक्त खोपामा सरस्वतीको मूर्ति स्थापित गरियो । यसरी अज्ञानवश स्थानीय मानिसहरूले यस ठाउँलाई सरस्वती थान भन्ने गर्दछन् । छतको भित्री भागमा रहेको खोपामा राम्ररी नियाल्यो भने प्रज्ञारुपी खड्ग लिइरहेको मञ्जुश्री मूर्ति देखिनेछ ।

## मन्दिर, तीर्थ, उप-तीर्थहरूको सिर्जना

स्वयम्भू महाचैत्यको निर्माण र स्वयम्भू ज्योतिरूपको आवरण पछि प्रज्ञापारमिता धर्मोदया गुह्येश्वरीको आविर्भाव भयो । त्यसपछि स्वयम्भू ज्योति-रूपको पञ्चरश्मिका प्रतिक पञ्चबुद्ध – वैरोचन, अक्षोभ्य, रत्नसम्भव, अमिताभ र अमोघसिद्धि प्रादुर्भूत भए । अनि पञ्च बुद्धका शक्ति-वज्रधात्वेश्वरी, लोचनी, मामकी, पद्मनी (पाण्डुरा) र आर्य ताराको पनि उद्भव भयो । यसका लगत्तै पछि पाँच जना बोधिसत्व – समन्त भद्र, वज्रपाणि, रत्नपाणि, पद्मपाणि र खड्गपाणि पञ्चबुद्धका 'उपाय' द्वारा तथा पाँच ताराका 'प्रज्ञा' द्वारा उत्पन्न भए । यसलाई प्रज्ञा र उपायको सम्मिलन 'प्रज्ञोपाय' (इन्द्रिय सम्भोग सुख) भनिएको हो । यी पाँच जना बोधिसत्वहरू मध्ये पद्मपाणि प्रमुख हुन् । यिनलाई पद्मपाणि अवलोकितेश्वर पनि भनिन्छ । पद्मपाणि लोकेश्वरले आफ्नो 'लोकसंसार

ज्ञान' समाधिको शक्तिले दश देवताहरू सृष्टि गरे । यी दश देवता मनुष्यहरू-को रक्षार्थ उनका शरीरका दश अङ्ग-प्रत्यङ्गबाट सिर्जिएका हुन् । यसले उनी सृष्टिकान्त लोकेश्वर (यस लोकका अधिपति) कहलिए ।

१) शिरबाट — महादेव
२) आँखाबाट — चन्द्र, सूर्य
३) कांधबाट — ब्रह्मा
४) हृदयबाट — नारायण
५) दन्तबाट — सरस्वती
६) मुखबाट — वायुदेव
७) नाभिबाट — अग्निदेवता (देवी)
८) पेटबाट — वरुण देवता (देवी)
९) घुँडाबाट — लक्ष्मी
१०) पाउकाबाट - पृथ्वी देवी

स्वयम्भू आदि बुद्धको उपासना अधिकतया काठमाण्डौमा गरिन्छ । पशुपति क्षेत्र देउपाटन (देवपतन) मा श्री गुह्येश्वरीको र पाटन (ललितपुर) मा अमिताभका मानस पुत्र यी करुणामय आर्यावलोकितेश्वरको उपासनालाई प्रश्रय दिइन्छ । पाटनको मल्ल दरबारको सुनको झयालमा सृष्टिकर्ता आर्यावलोकितेश्वरको मूर्ति राखिएको छ । आर्यावलोकितेश्वर, श्री करुणामय र श्री लोकनाथप्रति दर्शाइने श्रद्धाभक्तिको कारणले नै तिनीहरूको मूर्ति शाही सिक्कामा अङ्कित गरिका हुन् । लोकनाथ करुणामयको पूजा पाटनमा सृष्टिकर्ताको रूपमा गरिन्छ । काठमाण्डौको छाउनीस्थित राष्ट्रिय अजायब घरभित्र भित्तामा सृष्टिकर्ता लोकेश्वर चित्रित एउटा पुरातात्विक (कपडाको) थांका भुण्डिएको छ । अर्को उल्लेखनीय कृति ढुङ्गाको स्मारिका चाहिँ काठमाडौं जनबहाल (केल टोल) स्थित लोकेश्वरको चोकमा आज पनि देखिन्छ जसमा नेपाल भाषा (नेवारी) मा रचिएका स्तुति कविताहरू कुँदिएकाछन् ।

स्वयम्भू पुराणअनुसार क्रकुच्छन्द तथागत आफ्ना शिष्य गुणाध्वज ब्राह्मण र अभयानन्द क्षेत्रीलगायत अरु सात सय शिष्यलाई साथमा लिई आएका थिए तथा यिनले सिकंवोस्थित वाकद्वारमा तिनीहरूलाई प्रव्रजित गरेका थिए । त्यसपछि यिनी मञ्जुपतन आए । यिनले ब्रह्मा, विष्णु र महेश्वरलाई गुह्येश्वरीको वनमा मृग रूपमा घुमिरहेको देखे । क्रकुच्छन्द तथागतले आफ्ना शिष्यहरूलाई महेश्वर महादेव पशुपतिले भविष्यमा खेल्ने भूमिका बारे व्याख्या गरे तथा तिनीहरूलाई ब्रह्मा, विष्णु र महेश्वरको परिचय गराइदिए ।

स्वयम्भूको माहात्म्यले गर्दा काठमाण्डौं खाल्डाको सेरोफेरामा अवस्थित चार ओटा चुचुरा – नामाचो, ध्यानचो, फूलचो र सिफुचो प्रसिद्ध र पवित्र तीर्थस्थल बने । बागमती, केशावती, प्रभावती र विष्णुमती नदीहरूको उत्पत्ति क्रकुच्छन्द तथागतको आगमन पछि भएको हो । यसरी नै अष्टबोधिसत्वका वारेस (प्रतीक) को रूपमा साँखु मणिलिङ्गेश्वर र मणिचूड दह, गोकर्णका गोकर्णेश्वर, थानकोटका किलेश्वर, पाटनको चन्ताँका कुम्भेश्वर, फर्पिङ्का गणेश्वर फणिकेश्वर, चोभारको गन्धेश्वर, स्वयम्भूको नजीक होल्चोको विक्रमेश्वर होल्चोपारि रहको ह्वंगु प्रकट भए । यसपछि पशुपतिको सुराय (शोधन) तीर्थ गुह्येश्वरीको शान्त तीर्थ, पाटनको शङ्खमोल स्थित शङ्कर तीर्थ, थतिलको राज तीर्थ, काठमाडौं फुसिखेलको मनोरथ तीर्थ, काठमाडौं विष्णुमतीको भगवतीनिरको निर्मल तीर्थ र भाचा खुसी, काठमाण्डौंको निधान तीर्थ, ज्ञान तीर्थ, कीर्तिपुरको नजीकै रहेको टेखुदोभानको चिन्तामणि तीर्थ, कीर्तिपुर दानागा नजीकको प्रमोद तीर्थ, सुलक्षण तीर्थ, माजंगालको जय तीर्थ आदि पुण्य तीर्थहरूको सिर्जना भयो । अनि तारा दह, अगस्त्य दह, टौदह, मणिचूड दह, कोटुवाल दह इत्यादि दहहरू पनि प्रकट भए । द्वादश तीर्थको सिर्जनापछि आठ ओटा पीठमा अष्टमातृका – ब्रह्मायणी, माहेश्वरी, कौमारी, वैष्णवी, वाराही, इन्द्रायणी, चामुण्डा, महालक्ष्मीको स्थापना भयो । त्यसपछि अष्टमहाश्मशान चन्द्रोद्य, गह्वर, ज्यालाफुला, कलङ्कविस्न, अट्टहस लक्ष्मीयन्त, घोरन्धाकार र किलकिल जस्ता आठ वटा मूर्दा पोल्ने ठाउँ अस्तित्वमा आए । प्रत्येक श्मशानमा एउटा एउटा चैत्य— कायवज्र चैत्य, वाक्‌वज्र चैत्य, चिन्तावज्र चैत्य, रत्नवज्र चैत्य, शान्तवज्र चैत्य, शङ्करवज्र चैत्य, विश्ववज्र चैत्य र रागवज्र चैत्य बनाइयो । यी मसानहरू हरेकमा एक एक जना गरी जम्मा आठ जना सिद्ध— कच्छपाद, शवरपाद, विरूपाक्षपाद, नागरोपाद, कुकुरिपाद, जालन्धरपाद, चर्पटिपाद र गोरक्षपाद आई तपस्या गरे । यसरी यी देवदेवी, वीतराग, तीर्थ, उपतीर्थ श्मशान, पीठ, मातृकागणहरू स्वयम्भू ज्योतिरूपको प्रादुर्भाव भए पछि निस्केका हुन् ।

## स्वयम्भू धर्मधातु र सर्वोत्तम बौद्ध दर्शन

उहिले उहिले देखि अटूट चलिआएको परम्पराहरू द्वारा श्रीस्वयम्भू वागीश्वरी र पञ्चबुद्धहरूको नेपाली जन-जीवनमाथि कहिल्यै नमेटिने आधारभूत छाप परेको छ । यो प्रभाव जीवनको हरेक पक्षमा भेटिन्छ । पञ्चबुद्ध सहितको स्वयम्भू र यसका पञ्च तत्व (अर्थात पाँच आधारभूत विचार) ले विशेष प्रभाव

२) स्वयम्भू महाचैत्यको पूजाकलको वर्णन
३) स्वयम्भू – महाचैत्य – भट्टारकोद्देश – छन्दोवाद
४) स्वयम्भू चैत्य भट्टारकोद्देश समुद्भूति
५) तीर्थ र पीठहरुको वर्णन
६) धर्मधातु वागीश्वरको विषयमा उपदेश
७) स्वयम्भू चैत्य भट्टारकोद्देश धर्मधातु वागीश्वर गुप्तिकरण
८) स्वयम्भू चैत्य भट्टारकोद्देश महाप्रभाव वर्ण

स्वयम्भू पुराण सम्बन्धी यी दुईटा ग्रन्थ अधिकतया विपश्वी बुद्धको नेपाल आगमन देखि सम्राट अशोकको आगमन सम्मको अवधिसित सम्बद्ध छन् । त्यसपछि लिखतहरु राखिएका छैनन् । तर स्वयम्भू पुराणमा चाहिं सम्राट अशोकको समयपछि घटेका घटनाहरूको विवरण पनि भेटिन्छ । यो ग्रन्थले महत्वपूर्ण मानिसहरुको आगमन, विशिष्ट विद्वानहरूका कृति, विभिन्न किसिमका धार्मिक अनुष्ठानहरू, जीर्णोद्धार, गुठीहरूको गठन इत्यादिको वर्णन गर्दछ । यसरी यो पुस्तकले स्वयम्भू पुराणमा वर्णित घटनाहरूसित स्वयम्भूसंग सम्बद्ध पछिका घटनाहरूलाई पनि जोड्दै अशोकको आगमन पछिको अवधिको पनि ऐतिहासिक जानकारी दिन्छ ।

हाम्रो परम्परा र सांस्कृतिक उत्तराधिकारको विचार गर्दा स्वयम्भू महाचैत्य स्वयम्भू पुराणमा वर्णित भए अनुसार हज्जारौं वर्ष पुरानो सिद्ध हुन्छ । केही विद्वानहरू स्वयम्भू महाचैत्य बारे कसले, कहिले र कहां उपदेश दिएका थिए भन्ने कुरामा सहमत छैनन् । यस सम्बन्धमा हामी के थाहा पाउछौं भने शाक्यमुनि बुद्ध लुम्बिनीबाट आई गोपुच्छ गिरिको पुराण स्वयम्भूमा भावी–बुद्ध मैत्रेय बोधिसत्वलाई स्वयम्भू महाचैत्यबारे देशना गरेका थिए । यो घटनाको बयान भिक्षु उपगुप्तले शाक्यमुनिको महापरिनिर्वाण भएको दुई सय वर्ष पछि सम्राट अशोकलाई गरेका थिए । यही कुराको वर्णन उपगुप्तले कुक्कुटाराम विहारमा पनि गरेका थिए । उपरोक्त कुरा भिक्षु आनन्दले भिक्षु जयश्रीलाई बताएका थिए, जयश्रीले जिनश्री राज बोधिसत्वलाई बताएका थिए, जिनश्रीले भिक्षु शनकश्रीलाई बताएका थिए भनी उपगुप्तले भनेका थिए । यसरी स्वयम्भू पुराण वंशावली शाक्यमुनि बुद्धका समकालीन शिष्य भिक्षु आनन्दबाट भाणक परम्पराको क्रमले आएको हो ।

सम्राट अशोकले एक वखत अखिल भिक्षु संघ सङ्गायन गरी ग्रन्थहरूको संग्रह गर्ने अठोट गरे । ती ग्रन्थहरू मध्ये एउटा चाहिं स्वयम्भू धर्मधातु वागीश्वर ( स्वयम्भू पुराण ) सम्राट अशोकद्वारा आयोजना गरिएको सङ्गायन भनिने

यो सम्मेलन आफ्नै ढङ्गको पहिलो सम्मेलन थियो । पछि यस्तो सङ्गायन एक-दम नियमित रुपले हुन थाल्यो । छैटौं सङ्गायन बर्माका प्रधानमन्त्री उ नुको आयोजनामा ई. १९५३ सालमा रङ्गुनमा भयो ।

सम्राट अशोकको आगमन पछि धेरै सिद्ध, योगी, आचार्य, भिक्षु र धेरै राजाहरु स्वयम्भू महाचैत्यको दर्शन गर्न आए ।

स्वयम्भूको माहात्म्य परम्परा वा पुराणमा मात्र होइन उत्खननबाट प्राप्त पुरातात्विक वस्तु र अभिलेखहरुमा समेत आधारित छ । स्वयम्भूमा "शङ्करदेवो नरेन्द्र" कुँदिएको एउटा पूर्व-लिच्छविकालीन अति प्राचीन शिला-लेख पाइएको थियो । यो अभिलेखबाट के निष्कर्ष निकालियो भने ऐतिहासिक महत्वका राजा मानदेवका बाजे राजा शङ्करदेवले स्वयम्भू विहारको गुठीको लागि एक टुक्रा जग्गा दान दिएका थिए । यो शिलालेख पढेर ठम्याउन केही कठिन छ । क-कसैले के अर्थ लगाउँछन् भने त्यो जग्गा राजा मानदेव आफैले दिएका थिए, बाजे चाहिँले होइन । यो कुरा जसो भए-तापनि स्वयम्भूमा ज्यादै प्राचीन काल देखि नै विहार रहेको थियो भन्ने कुरा निश्चित हुन्छ । के कुरा पनि तर्क सिद्ध हुन्छ भने मानदेवका बराज्यू राजा वृषदेवको समयमा भिक्षु शान्तिशीलको सक्षम नेतृत्वमा एक टोली भिक्षुहरु स्वयम्भू विहारमा आएका थिए भनेर त्यस शिलालेखमा कुँदिराखेको हुनाले मानदेव कालभन्दा दुई तीन शताब्दी अगाडि नै यहाँ विहार कायम थियो । पुराना अभिलेखहरु स्वयम्भू मात्र होइन गोकर्ण र बाँडेगाउँ जस्ता ठाउँहरुमा पनि भेटिएका छन् । गोकर्ण र बाँडे गाउँ ( गोदावरी जाने बाटोमा ) मा पाइएका अभिलेखहरुबाट राजा अंशुवर्माले स्वयम्भू विहारलाई केही जग्गा दान दिई स्वयम्भू विहार गुठीको लागि आर्थिक व्यवस्था गर्ने एउटा अड्डा नै स्थापित गरेका थिए भन्ने कुरा थाहा हुन्छ । काठमाडौंको इटुंबहाल, वटु, पशुपति, तःबाहा, विष्णुमती पुल, हृयुमत, बुद्धबारी र बालाजुको नजीक म्हेपीमा अनेकौं शिलालेखहरु पाइन्थे । ती मध्ये केही भारतका मुसलमान सुल्तान शमशुद्दीन इलियासले नेपालमा हमला गर्दा ध्वस्त पारिएका थिए । बाँकी रहेका केही कृतिहरु पनि अहिले कि त हराए कि त चोरिए । कुनै कुनै अभिलेखहरुले स्वयम्भूको दर्शन गर्न सातौं शताब्दीमा आएका चिनिया तीर्थयात्रीहरुले एउटा सुनको चंदुवा चढाएको चर्चा गर्दछन् । विजयकामदेवको राज्य कालमा मंत्रीचन्द्र शाक्यभिक्षुले स्वयम्भू महाचैत्यको जीर्णोद्धार गरेका थिए भनेर लेखिएको शिलालेख पाइन्थ्यो । साठी - सत्तरी वर्ष अगाडिसम्म स्वयम्भूमा पाइने यो शिलालेख अहिले गायब छ । नेपाल संवत् २४६ ( सात सय वर्ष भन्दा अगाडि ) सालमा गरिएको जीर्णोद्धारको उल्लेख

बनाइन्छन् । यिनीहरु 'त्रयोदश चक्रावली' कहिन्छन् । उपरोक्त टुप्पा 'उष्णीष चूडामणि' कहिन्छ र यहाँ एउटा हीरा राखिन्छ । सबभन्दा माथि एउटा झल्लरदार छत्र राखिन्छ ।

श्री स्वयम्भू महाचैत्य त्रिधातु – कर्मधातु, रुपधातु र अरुपधातुको प्रतीक हो । 'त्रिधातु' – को अर्थ कर्मधातु (काम लोक), रुपधातु (रुप लोक) र अरुप धातु (अरुप लोक) भनिने तीन भुवन वा लोक हुन् । सबभन्दा माथि 'पञ्चकृति' हुन्छ जसको मतलब हो सांसारिक बन्धन । स्वयम्भू स्तूपको गर्भ अर्थात् अर्ध–गोलाकार सबै बुद्धहरुको प्रज्ञाको स्रोतको प्रतीक हो । यो अर्ध – गोलाकारमा रहने पञ्च बुद्धहरु पञ्च महाधातु (पञ्च तत्व) र आत्मा (षडायतन र स्पर्श, वेदना, तृष्णा, उपादान, भव जाति इ० द्वादश निदानसहितको चित्त जसबाट मानवसहित सबै चेतनशील प्राणीहरु बनेका हुन्छन् ) का सांकेतिक अभिव्यक्ति हुन् । पञ्च बुद्ध ती उपाय र साधन हुन् जसद्वारा स्वयम्भू धर्मधातुको ज्ञान प्राप्त गरी संसारबाट उन्मुक्ति पाउन सकिन्छ । यी पञ्च बुद्धहरु सदैव निर्वाणतिर जाने बाटो देखाउन तत्पर रहन्छन् । पञ्चतारा – लोचनी, मामकी, पद्मनी (पाण्डुरा), आर्यतारा र वज्रधात्वेश्वरी पञ्च बुद्धका "शक्ति" हुन् । वज्रधात्वेश्वरीको मूर्ति रहेको कुङ्‌ खोपा अहिले खाली नै छ । सबै पाँचै तारा वा शक्ति देखिने गरिराखिएकाछन् । गर्भमाथि चित्रित आँखाहरु मानिस र पशुहरुलाई समान रुपले शान्ति र सुख प्राप्त गराइदिन सतर्कताका साथ दृष्टि लगाइरहेका प्रज्ञोपाय–रुपी आँखा हुन् । अर्को अर्थमा यिनीहरु पञ्चज्ञान चक्षु हुन् । दुइटा आँखाको बीचमा रहेको प्रश्न चिन्ह जस्तो चिन्ह तथागतहरु समाधिस्थ हुँदा निसृत हुने ज्योतिको प्रतीक विम्बरश्मि हो । यो ज्योतिलाई 'गर्भस्तिमाल रश्मि' पनि भनिन्छ । यसमाथि रहेका चिन्हहरु पञ्च बुद्धका कुलका चिन्ह– चक्र, रत्न, पद्म र विश्ववज्र हुन् । यो चिन्ह माथि रहेका तेह्र तला (त्रयोदश चक्रावली) मनुष्य, देवदेवी, भोकाएका भूतप्रेतहरु सबैको लागि अन्तर्दृष्टि प्राप्त गरी त्यस पूर्ण आलोकित छरणमा पुग्ने अनुपम अनुत्तर सम्यक् सम्बोधि ध्यानसम्बन्धी ज्ञानोपदेशको सांकेतिक अभिव्यक्ति हो ।

उपरोक्त तेह्र तलाका नाउँ यस प्रकार छन् :– १) प्रमुदिता, २) विमला, ३) प्रभाकरी, ४) अर्चिष्मती, ५) सुदुर्जया ६) अभिमुखी, ७) दूरङ्गमा. ८) अचला, ९) साधुमती, १०) धर्ममेघा, ११) समन्त प्रभा, १२) निरुपमा र १३) ज्ञानवती (वा वज्रभूमि) 'आचार्यक्रियासंग्रह' शीर्षक ग्रन्थमा स्वयम्भू महाचैत्यको प्रत्येक अङ्गको व्याख्यात्मक अर्थ र आकार प्रकारको सविस्तार वर्णन दिइएको छ ।

संक्षिप्त विवरण र नामहरू यस प्रकार छन् :-

भूमि ( संस्कृतमा 'वेदिका', नेवारीमा 'का' ) को परिधी बत्तीस लक्षणका प्रतीक ३२ 'तालमान' हुन्छ । वेदिकाको उचाई हेतुप्रभव (प्रतीत्य समुत्पाद) वा द्वादशनिदानको सूत्रको प्रतीक १२ तालमान हुन्छ । गर्भ (पात्र कृति वा धान्यराशि कृतिले) ले पारमिता (दशबल) को प्रतिनिधित्व गर्दछ । स्तम्भ (फिछहार) अर्थात् गर्भको टुप्पामा रहने चारपाटे ग्रहबाट चार प्रार्य सत्य प्रतिविम्बित हुन्छ । धातुका फूलमाला जस्तो तोरणले चार थोटा समाधि (चतुर्ध्यान) लाई जनाउँदछ ।

छत्र विशुद्धताको प्रतीक हो भने ध्वजाहरू चित्त शुद्धिका प्रतीक हुन् । मुण्डिएका पताकाहरूबाट पुण्यहरूको फैलावटको बोध हुन्छ । टुप्पाको उत्तीय चूडामणिमा रहेको रत्न महाकरुणाको प्रतीक हो ।

## स्वयम्भूका ऐतिहासिक लिखनहरू

स्वयम्भू पुराण सम्बन्धी ग्रन्थ– १) स्वयम्भू पुराण, २) बृहद् धर्मधातु पुराण वागीश्वरमा ककसले, कहिले र के कस्ता धार्मिक अनुष्ठान गरेका थिए तिनका विस्तृत वर्णनहरू दिइएका छन् ।

स्वयम्भू पुराणमा निम्नलिखित ६ परिच्छेद छन् :–

१) स्वयम्भूज्योतिरूपको उत्पत्तिको वर्णन
२) गोपुच्छ, गुह्येश्वरी देवी र मञ्जुश्री चैत्यको उत्पत्ति
३) वागमती, केशावती नदीहरूको सिर्जना, ककुच्छन्द बुद्धको आगमन, भिक्षुहरूको प्रव्रज्या
४) मणिचूड ... ... मकरवश – सम्भव ( मणिचूडको विषयमा )
५) वीतराग समुत्पत्ति कथा
६) पुराय तीर्थ र द्वादश तीर्थको वर्णन
७) उप–तीर्थ, मातृका पीठ र स्मशानको वर्णन
८) धर्मधातु वागीश्वर मण्डलको उत्पत्ति
९) प्रचण्डदेवबाट स्वयम्भू ज्योतिरूप छोपिनु र उनको दीक्षा
१०) वर्षाको निम्ति शान्तिकराचार्यले गरेको नाग साधनको वर्णन
११) पूजाबाट प्राप्त हुने पुण्यहरूको वर्णन

बृहद् स्वयम्भू पुराणमा निम्नलिखित ८ परिच्छेद छन् :–

१) धर्मधातुको र कालिह्रदको उत्पत्ति सम्बन्धी कथा

जमाएकाछन् । हामीहरूले शान्त, स्वरूपहीन र शाश्वत निर्वाण प्राप्तिको निम्ति त्रिरत्न (बुद्ध, धर्म र संघ) र पञ्चज्ञानको सिद्धान्त सहितको स्वयम्भू धर्मधातुका रहस्यसित आत्मसात् गर्न सक्छौं ।

आदिबुद्ध-सूत्र-तन्त्र अनुसार आदि बुद्धका पाँच रूप छन्:

१) पहिलो, आदि बुद्ध स्वयम्भू ज्योतिरूप,
२) दोस्रो, आदि बुद्ध समन्त भद्र तथागत
३) तेस्रो, आदि बुद्ध वज्रधर तथागत
४) चौथो, आदि बुद्ध वज्रसत्व तथागत
५) पाँचौ, आदि बुद्ध धर्मधातु वागीश्वर

बौद्ध धर्ममा स्वयम्भू "आदि बुद्ध ज्योतिरूप स्वयम्भू धर्मधातु वागीश्वर"-को नाउँले बहुर्चावित छ । यी नाउँहरू सबै एकै भए पनि यिनका पाँच भिन्ना-भिन्नै अर्थ छन् ।

१) आदि बुद्ध- आदि बुद्धको शाश्वत सुख, अस्तित्वको लोप, शून्यता ।
२) स्वयम्भू:- समन्त भद्रको करुणा, बुद्ध अनुरूपको चित्तवृत्ति ।
३) ज्योतिरूप:- शक्ति, ज्योतिको वज्रधरको शरीर ।
४) धर्मधातु:- वज्रसत्वको सर्वोत्कृष्ठता विशुद्धता ।
५) वागीश्वर:-नाम संगीति अर्थात् महा मञ्जुश्रीको सर्वज्ञता, शाश्वत प्रज्ञा

स्वयम्भू अनादि कालदेखि रागरहित भएकोले नै 'आदि बुद्ध' भनिएको हो ।

'ज्योतिरूप' – को अर्थ आदि बुद्धबाट निस्रृत शाश्वत ज्योति हुन्छ ।

'स्वयम्भू' – को मतलब आफै अस्तित्वमा रहेको, कसैबाट सिर्जित नभएको भन्ने हुन्छ ।

स्वयम्भू ज्योतिको सर्वशक्तिमत्ताबाट धर्मधातु मण्डलको उत्पत्ति भएको हो । यही कारणले स्वयम्भूलाई धर्मधातु पनि भनिन्छ । स्वयम्भूको सामुन्ने धर्मधातु मण्डल संस्थापित गरिनुको कारण यही हो ।

वागीश्वर महामञ्जुश्री पञ्च बुद्धको एकिकृत रूप हो । नामसंगीति यसैको अर्को नाउँ हो । 'बहुजनहिताय' र 'बहुजनसुखाय' आदि बुद्ध स्वयम्भू पञ्च बुद्धको रूपमा प्रकट भएका थिए । वज्रधरको शरीरमा अन्तर्भूत भएका शान्तिकराचार्यले स्वयम्भू ज्योतिलाई छोपी स्थसमाधि स्वयम्भू महाचैत्य बनाए । प्रथम आदि बुद्धको उल्लेख स्वयम्भू पुराणमा गरिएको छ । द्वितीय र चतुर्थ

आदि बुद्धहरू 'गुणाकरण्डव्यूह' – मा वर्णित छन् । 'महायोग तन्त्र' – मा तृतीय आदि बुद्धको विवरण भेटिन्छ । पञ्चम आदि बुद्धको वर्णन "मायाजाल तन्त्र नामसंगीति" – मा पाइन्छ । आदि बुद्ध स्वयम्भूलाई " श्री स्वयम्भू धर्मधातु वागीश्वर " पनि भन्नुको कारण यही हो । यो कुरा स्वयम्भूको पर्यस्थानमा पाइएको शिला अभिलेखमा कुँदिएको पाइन्छ । आचार्य प्रभाकारमतिले 'बोधि–सत्व – आचार्य – अयतार ' – को आफ्नो टीकामा यस सम्बन्धी विवरण प्रस्तुत गरेकाछन् ।

मैत्रेय बोधिसत्व भविष्यमा आई शाक्यमुनि बुद्धले गोपुच्छ पर्वतमा गर्नु भएको व्याख्याबाट प्राप्त भएको ज्ञान अनुसार स्वयम्भू धर्मधातु बारे उपदेश दिने छन् भन्ने विश्वास गरिन्छ । मैत्रेय बोधिसत्वको शिरमाथि श्रीस्वयम्भू चैत्य राखेर देखाइनुको कारण यही हो ।

स्वयम्भू महाचैत्यको सम्झना गर्ने वित्तिकै गोपुच्छ पर्वतको याद हुन्छ जसको चुचुरोमा एउटा सौम्य, शान्त र गरिमामय रूपले खडा रहेको अग्लो ठूलो स्तूप देखिन्छ । आफ्नै छुट्टै शैलीमा निर्मित यो चैत्यले आगन्तुकहरूको ध्यान खिंच्दै उनीहरूमा श्रद्धाभक्ति भावनाहरू जगाउँदछ । एउटा बृहद् गोला–कार आधार शिलामा बनाइएको एउटा 'मण्डल' – मा स्वयम्भूको कथालाई चित्रित गर्ने मूर्तिहरू कुँदिएका छन् । चावलको थुप्रोले भरिएको "पात्र" – को रूपमा स्थापित यो गोलाकार आसनमा उठाइएको चैत्यको चुच्चो आकाशतिर गएको छ । यो चैत्यको चारैतिर चार दिशामा सुनको मोलम्वा लगाइएका पाँच ओटा बुद्ध र चार ओटा तारा मूर्तिहरू छन् । पात्राकारको यो गर्भगृहमाथि चारपाटे स्तम्भ ( संस्कृतमा 'गर्भास्तिमाल', नेवारीमा 'चकूल' भनिन्छ ) उठा-इन्छ र यसको चारैतिर दुई दुई ओटा आँखा लेखिन्छन् । यो स्तम्भमाथि एउटा अर्ध–गोलाकार धातुको पाता पाली जस्तो गरेर राखिन्छ । यी पाताहरू 'तोरण' कहिन्छन् र प्रत्येक तोरणमा जुन जुन दिशातिरको हो । त्यही त्यही दिशाको बुद्धको कुलका चिन्हहरू कुँदिएका हुन्छन् । तोरणलाई नेवारीमा 'हलपति' (वा हल: पौ) भनिन्छ । उपरोक्त चारै तोरणमा रहेको चक्रको माथि बाटुलो गरेर तेह्र तला उठाइन्छ । यो तेह्र तला माथि कमलाकार आउने गरी ठडाइएको पाँच ओटा थामको टुप्पा बनाइन्छ । त्यसबाट 'गोलध्वज' र 'अशोक ध्वज भनिने पताकाहरू फर्फराइरहन्छन् । तिनमा 'सर्वसुगतहृदयधारणी सूत्र' अङ्कित गरिएको हुन्छ । ' रञ्जना ' नेवारी अक्षरमा लेखिएका यी अक्षरहरू घाममा टल्किरहेका हुन्छन् । स्तूपको चुच्चो 'गजुर' र यी धातुका पताकाको बोक्ने छाता ओढाउने जस्तो एक माथि अर्को गरी उपरोक्त चक्राकारको तेह्र तला

भएको एउटा शिलालेख लगायत कयन शिलालेखहरू हाल हराएका छन् । यस्तो कुरा सोच्दा सम्म पनि हृदय – विदीर्ण हुन्छ ।

बृहद् स्वयम्भू पुराणको चौतीसो परिच्छेदमा स्वयम्भू महाचैत्यबारे चीनको थाङ वंशीय इतिहासमा पनि पाइने उदाहरणहरू देखा पर्दछन् । थाङ वंशको इतिहास काठमाडौंमा पाइएको स्वयम्भू पुराणभन्दा छ – सात शताब्दी पुरानु हो । चिनिया यात्री ह्युयन-साङ्ले बयान गरेको कैलाशकूट भवन वा त्यसका भग्नावशेषहरू नेपालमा भेटिएका छैनन् । ती चिनिया यात्रीले बयान गरे बमोजिमका मानगृह र भद्राधिवासका भग्नावशेषहरू खोज्ने प्रयासहरू पनि भए-का छैनन् । चीनको थाङ वृत्तान्तमा एकदम राम्ररी वर्णित भएकी नेपालका राजाकी छोरी भृकुटी तारा र नेपाली बौद्ध भिक्षु शीलमञ्जु एवं सुप्रसिद्ध कलाकार अरनिकोको बारे नेपालमा कुनै लिखत पाइन्न । त्यसरी नै चीनमा बौद्ध धर्म प्रचार गर्न फाहियनसित चीनमा जाने बौद्ध भिक्षु भद्रबाहुको विषयमा पनि नेपालमा कुनै लिखत चर्चा भेटिन्न । प्रचीन नेपालका कयन महत्वपूर्ण ऐति–हासिक ग्रन्थहरू कति त चोरिएका कति त विदेशहरूलाई बेचिएका देखिन्छन् । नेपाली विद्वान्हरू तिब्बत, चीन, भारत, बेलायत, संयुक्त राज्य अमेरिका, फ्रान्स, इटालीमा गई ती देशका पुस्तकालयहरू – जहाँ कयन प्राचीन बहुमूल्य ऐति–हासिक ग्रन्थहरू अझ सुरक्षित गरिएका छन् – मा अन्वेषण गर्ने बेला आइसकेको छ । न्यूयोर्कको एशियाली चित्र संग्रहालयमा एउटा बहुमूल्य थांकाको संरक्षण गरिएको छ । श्री प्रतापादित्य पालद्वारा सम्पादित " नेपाल जहाँ देउताहरू जवान छन्" शीर्षक क्याटलगको पृष्ठ ६९ मा यही थांकाको विषयमा गरिएको चर्चाको सिलसिलामा स्वयम्भूको जीर्णोद्धारको निम्नलिखित कुरा लेखिएकोछ :–

" पाटनका शक्तिशाली व्यक्तिहरू – श्री जयपुरन्दर सिंह देवका दाज्यू नरसिंह, उद्धवसिंहले, नेपाल सम्बत् ६८५ सालमा, स्वयम्भू महाचैत्यको जीर्णोद्धार गरे । जीर्णोद्धार एउटा थांकामा देखाइएको छ । त्यसवेलाका मानिसहरूको जन–जीवन र तल चर्चा गरिए बमोजिमका ठाउँहरूका भौगोलिक रुपरेखाहरू पनि देखाइएका छन् :- श्री मानिगल, श्री यलदेश, श्री यङ्गाल देश, श्री गोल्वदेश, श्री थावदेश, श्री ठसीदेश, श्री कीसिदेश, श्री जलदेश, श्री खासादेश, श्री यान्बुदेश श्री खोपदेश (भक्तपुर), श्री ठेमिदेश (ठिमी), श्री स्वदेश इत्यादि । पञ्चबुद्ध - वैरोचन, अक्षोभ्य, रत्नसम्भव, अमिताभ र अमोघसिद्धिका मूर्तिहरू स्वयम्भूमा बाह्रौं र तेह्रौं शताब्दीमा संस्थापित गरिएका थिए । यसभन्दा अगाडि यी मूर्ति-हरू गर्भगृह भित्र राखिएका थिए र समय-समयमा जीर्णोद्धार हुने वेलामा मात्र देखन सकिन्थ्यो भनिन्छ ।"

पञ्च बुद्ध, आदि बुद्ध र अमिताभ तथागत बारेका केही अर्थपूर्ण वर्णनहरू 'सुखावती - गुह्य' भनिने महायानी सूत्रमा पाइन्छन् । शाक्यमुनि बुद्धले महाजदाता अनाथपिण्डिकको श्रावस्तीस्थित जेतवन विहार ( आजकाल भारतको विहार प्रान्तको गया नजीक ) मा बसिरहँदा अमिताभ तथागतका बारे आफ्ना प्रमुख शिष्य सारिपुत्रलाई उपदेश दिएका थिए ।

यस बाहेक, अक्षोभ्यको केही उल्लेख महायान सूत्र "सुखावती व्यूह" मा गरिएको छ । " भारतीय कलाको विहारको देन " शीर्षक किताबको पृष्ठ १५६ मा भेटिएको जानकारी अनुसार दोस्रो शताब्दीमा चिनिया भाषामा उल्था गरिएको एउटा ग्रन्थमा पनि अक्षोभ्य तथागतको बारे केही लेखिएको छ । एउटा चिनिया वंशावलीमा पनि चौथो शताब्दी देखि अक्षोभ्य बुद्ध र मञ्जुश्रीको बारे केही उल्लेख पाइन्छ । चिनिया भाषामा ई. २८६ सालमा लेखिएको "सद्धर्म-पुण्डरीक" - मा अमिताभ बुद्धका पुत्र आर्यावलोकितेश्वर, रत्नसम्भव तथागत र धर्मधातुको विषयमा पनि केही भनिएको भेटिन्छ । "गण्डव्यूह सूत्र" र "गुणकरण्ड गुह्य" - मा वैरोचन तथागतको स्तुति गरिएको छ । चैत्यमा संस्थापित गरिएका वैरोचन, अक्षोभ्य, रत्नसम्भव र अमिताभ बारेको लिखित विवरण भएका काठमाडौंमा पाइने किताबहरू ई.छैठौं शताब्दीताकाका मात्र हुन् । पञ्च बुद्ध मूर्तिहरू भएका चैत्यहरू पाटनको वज्र कीर्ति महाविहारमा पनि पाइन्छन् । पाटनको त्यागल टोल स्थित उत्तम बहालमा लिच्छवीकालिन चैत्यमा पूर्व लिच्छवि - कालिन लिपिमा अक्षोभ्य तथागत र अमिताभ बुद्धको बारे केही कुरा लेखिएको पाइन्छ । राजकुमारी भृकुटीको विवाह तिब्बतका राजा स्रङ चङ गम्पोसित भएको बेला दाइजोमा दिइएका अनेकौं बुद्ध मूर्तिहरू मध्ये एउटा चाहिं अक्षोभ्य बुद्धको थियो भन्ने उल्लेख छ । कण्हपा (संस्कृतमा कर्ण – पा) नाउँका एक जना प्रसिद्ध सिद्धले पञ्च तथागतको बारे एउटा चःचाः (तान्त्रिक गीत) रचेका थिए । यसरी आचार्य अनङ्गवज्रपादले " प्रज्ञोपाय विनिश्चय सिद्धि " शीर्षक आफ्नो तान्त्रिक ग्रन्थमा अतीव स्पष्ट संगं वैरोचन, अक्षोभ्य, रत्नसम्भव, अमिताभ र अमोघसिद्धि एवं तिनका शक्ति – लोचनी तारा, मामकी तारा, पद्मनी तारा र आर्य.ताराको विषयमा लेखेका छन् । वैरोचनको शक्ति " वज्रधात्वेश्वरी " – को समावेश भने गरिएको छैन ।

## स्वयम्भूमा तीर्थाटन

स्वयम्भू धर्मधातु प्रति अगाध श्रद्धाभक्ति राखी कैयन तीर्थयात्रीहरू अनेकौं स्थान र देशहरूबाट आए ।

भारतको काशीबाट स्वयम्भू महाचैत्यमा तीर्थ गर्न आएका एक जना प्रकाण्ड विद्वान् धर्मश्री मित्र स्वयम्भूमा नै बसोबास गरी नाम संगीतिको दीक्षा प्राप्त गरे। शाक्यमुनि बुद्धका पिता राजा शुद्धोदनको राज्य कपिलवस्तुबाट पण्डित बोधिधानाचार्य स्वयम्भूको दर्शन गर्न आए। यिनले फणकेश्वरी, गन्धेश्वरी र विक्रमेश्वरीमा तपस्या गरी अष्टसिद्धि प्राप्त गरे भनिएको छ। भारतको आन्ध्र प्रदेश स्थित बज्र पर्वतबाट आएका आचार्य नागार्जुन स्वयम्भूको रखवाला भएर बाह्र वर्ष सम्म यहीं रहे। नागार्जुन पर्वतमा पनि बसेर यिनले महायान बौद्ध दर्शन प्रचार गरे। वसुबन्धु आचार्य पनि गान्धार देखि स्वयम्भू महाचैत्यमा तीर्थ गर्न आए। स्वयम्भूमा नै यिनको मृत्यु भयो भनिएकोछ। यिनको स्मारिका चैत्य स्वयम्भूमा विद्यमान छ। पं. रति शर्मा ब्राह्मण स्वयम्भू महाचैत्यको दर्शन गर्न कनकवतीबाट आए। किन्डोल विहार यिनले बनाएको भनिन्छ। केही समय पछि काशीका सुनय श्री मित्र कपिलवस्तु हुँदै स्वयम्भूमा आइपुगे। यिनी तिब्बत पनि गए। तिब्बतबाट फर्केर यिनले पाटनमा यम्पि विहारको स्थापना गरे तथा मृत्युपर्यन्त त्यहीं बसे। पं शान्तरक्षित स्वयम्भूको दर्शन गर्न आए। यिनी स्वयम्भूमा नै बसी त्यहीं शान्तिपुर विहारमा रहने दिग्गज आचार्यहरू सित अध्ययन गरे। यिनी तिब्बत गए केही समय पछि त्यहींबाट फर्की यिनी स्वयम्भूमा नै बस्न लागे। यहीबीच काश्मीरबाट आएका पद्मसम्भव स्वयम्भूको पूजाउपासनामा लागे। यी पद्मसम्भवसगं शान्तरक्षित फेरि तिब्बत गए। भारतको विक्रमशील विद्यापीठबाट पं. अतिशा दीपङ्कर स्वयम्भूको दर्शन गर्न आए। त्यसपछि धर्मगुरु, वङ्लोत्सव, ल्हान्तोहवा स्वयम्भूको दर्शन गर्न आए तथा शान्तिपुर विहारमा रही गुरु रत्नरक्षितसंग अध्ययन गर्न लागे।

तिब्बतबाट आएका एक जना प्रसिद्ध लामा श्यामापाले स्वयम्भू महाचैत्यमा एउटा सुनौला तोरण (चढुवा) चढाए। यसरी गुरु दोर्जे छेवाङ, काग्युपा लामा थाम्चे खेंपा माधा साब्राग्पी, लामा वीररत्न, लामा पालदेन येशेल ताशि, भूटानका लामा देवधर्मा, तिब्बतको शिगात्सेका विद्वान् लामा शाक्यभद्र, लामा ताशि नाम्याल, भूटानी लामा शेरब दोर्जे, लामा शाक्य श्री, तिब्बतको खामका लामा सुपुत्र सिन्वा, ल्हासाका धर्मगुरु डराछे छोएजे, थिन्चेन नावा नोबु लामा, छिरिङ नोबु जस्ता अनेकौं लामाहरू तिब्बतबाट आई स्वयम्भूको जीर्णोद्धार र नवीकरण गरे। तिब्बतको ग्यौत्सेका क्योछे लामा खामस्थित गोंगु गाउँदेखि लम्पसार परी ज्यूले भुँई नाप्दै स्वयम्भूको दर्शन गर्न आए।

# स्वयम्भू प्रति राजकुलको आस्था

सम्राट् अशोक आफ्नो तीर्थ यात्राको क्रममा लुम्बिनी आई त्यहाँबाट निग्लो हुँदासिम्म कनकमुनि बुद्धको स्तूपको दर्शन गर्नआए । त्यसपछि तिनी आफ्ना गुरु भिक्षु उपगुप्त, महारानी तिष्यरक्षिता र छोरी चारुमतीको साथमा स्वयम्भू-को दर्शन गर्न आए । तिनले पाटनमा चार ठोटा थूर बनाए र पाटनको नाउँ तिनको नाउँबाट अशोकपत्तन रह्यो । सम्राट् अशोक के अनुकरण गरेर लिच्छवि राजाहरूको राज्यकालमा असंख्य चैत्यहरूको निर्माण भयो । लिच्छवि राजा वृषदेवले शान्तशीलसित अध्ययन गरी बौद्ध धर्म अपनाए । यी राजाले स्वयम्भू महाचैत्यमा निकै मरम्मत कार्य गरे भनिन्छ । वृष देवका छोरा शङ्कर देवले स्वयम्भूको एउटा विहारको लागि अक्षय दानको रूपमा जग्गा दिएका थिए । शङ्कर देवका छोरा धर्म देवले पनि स्वयम्भूमा धर्मशाला बनाएका थिए । तिनका छोरा मानदेवले छत्र र चँदुवा (तोरण) चढाए । ठकुरी राजा अंशुबर्माले तीन ठोटा गुँ विहारको सम्भारको लागि आर्थिक व्यवस्था मिलाइ गुठी बनाइ दिए भनिएको कुरा स्वयम्भूसित सम्बन्धित हुन सक्छ । लिच्छवि राजा नरेन्द्र देवको स्वयम्भूप्रति कतिको श्रद्धा थियो भने तिनले सधैं आफ्नो कमरको वरिपरि बुद्ध मूर्ति अङ्कित पेटी लाउँथये । अर्को चाहिं राजा नरेन्द्र देवले पाटन-मा मछेन्द्र नाथको रथ यात्रा गर्दा रथको टुप्पामा स्वयम्भूको मूर्ति राख्ने चलन चलाए ।

चीनका बादशाहले दूत मण्डल पठाई स्वयम्भूमा पीत वस्त्र चढाउन लगाए । थाङ वंशको राज्यकालमा एक जना बादशाहले स्वयम्भू महाचैत्यको वर्णनको अभिलेख अङ्कित गराउन लगाए । पश्चिम नेपालका मल्ल राजा जितारि मल्ल, पृथ्वी मल्लहरूको स्वयम्भूप्रति ठूलो श्रद्धा थियो । मल्ल राजा जयस्थिति स्वयम्भूको स्तुति गान गर्दथे । तिनका मन्त्री मदनराम सिंहले स्वयम्भूमा निकै मरम्मत कार्य गरेका थिए भनिन्छ । यसरी स्वयम्भूको जीर्णोद्धार कार्यमा ज्योति मल्ल, लक्ष्मीनरसिंह मल्ल, पार्थिवेन्द्र मल्ल, भास्कर मल्ल र जय प्रकाश आदि मल्ल राजाहरू खुला दिलले संलग्न भएका थिए । राजा शिवसिंह मल्लले स्वयम्भूलाई सुनौला छत्र चढाए । राजा लक्ष्मीनरसिंह मल्लले पनि स्वयम्भूलाई केही वस्तु चढाए । कवीन्द्र जयप्रताप मल्लले धर्म धातु मण्डलको संस्थापन गरी त्यसमाथि सुनौला वज्र राखे । गर्भगाथिको स्तम्भमा पनि सुनको मोलम्बा राख्न लगाए । जय नृपेन्द्र मल्लले दिव्य घण्टा चढाए । जय प्रकाश मल्ल र जय रण-जित मल्लले स्वयम्भूबारे कयन गीति कविता रचेका थिए ।

स्वयम्भूप्रति प्रनेक थोक बढाउने काम राजाहरूले मात्र होइन महारानी लालमती, प्रनन्तप्रिया देवी, भुवन लक्ष्मी र लक्ष्मी देवी जस्ता रानीहरूले पनि गर्दथे। वर्तमान राजवंशका महाराजाधिराज पृथ्वीनारायण शाह, म. गीर्वाण युद्ध विक्रम, म० सुरेन्द्र विक्रमहरूले पनि स्वयम्भू जीर्णोद्वार कार्यमा गहिरो प्रभि-रूचि लिई सहायता पुऱ्याएका थिए। वर्तमान महाराजाधिराज स्वयम्भूको दर्शन गर्न सवारी भएको थियो। शान्तिपुर भित्रका भित्रि चित्रको नवीकरण मौसूफ-बाट गराइबक्सेको हो।

## बौध्द सांस्कृतिक निधिको उत्पत्ति स्वयम्भूबाटै भयो

तीर्थ, गुम्बा, विहार, बाहाल, चोक, लाछि, ननि चुक एवं पर्वत, डांडो र चैत्यको प्राधार स्रोत स्वयम्भू नै देखिन्छ। बौद्ध संस्कृति र रीतिथिति-हरूले स्वयम्भूमा नै जरा लिएको देखिन्छ। जन्म, चूडाकर्म, विवाह, दीक्षा, प्रन्त्येष्ठी क्रिया सम्बन्धी र श्राद्ध जस्ता मरणोपरान्त गरिने संस्कारहरूको पृष्ठ-भूमिका मूल स्वयम्भूबाट उब्जेका पञ्च-ज्ञान र पञ्च-बुद्ध सम्बन्धी विचारहरू नै हुन्। सबै परम्परा र सामाजिक जीवनलाई ढाल्ने साँचो स्वयम्भू ज्योति रूपको दार्शनिक प्रभाव- शाश्वत ज्योतिको पश्चरश्मि–पश्चबुद्ध नै हो। वास्तुनिर्माण कला पनि स्वयम्भू ज्योतिरूपबाटै प्रभावित छ। यस सन्दर्भमा झ्याल, ढोका, स्तम्भ र ढोकामाथिको तोरण प्रादिमा गरिने कुँदाइ नै उदाहरणको रूपमा प्रस्तुत गर्न सकिन्छ। जन–जीवनको हरेक पक्षको सङ्गम बौद्ध वातावरण, प्रार्थना, पूजा इत्यादिसित भएको चाल पाइन्छ। उदाहरणार्थ, ढोकामाथि राखिने तोरणमा पञ्च बुध्दका मूर्तिहरू रहनुको प्रभिप्राय भित्र प्राउने र बाहिर जाने मानिसहरूले ढोकाबाट प्राउँदा जाँदा सधै तो बुद्धहरूलाई प्रापनो शिरमाथि राखी प्रणाम गरून् भन्ने हो। घरको शिलान्यास गर्दा पनि बौध्द 'स्थिरोभव सूत्र' पाठ गरिन्छ। यो सूत्र प्रनुसार छानाको मूल घुरी गरी तेर्सो राखिने दलिनलाई वैरोचन र पाँच सँझ्याललाई पञ्च बुध्द मानेर पूजा गरि-न्छन्। प्रक्षर लेख्न र पढ्न शुरु गर्ने केटाकेटीहरूलाई "ओमनमोवागीश्वराय" भन्ने र लेख्न सिकाइन्छ। "प्रोम् नमो"– को प्रर्थ "प्रणाम वा नमस्कार" र "वागीश्वराय"– को प्रर्थ "स्वयम्भू धर्म धातु" हुन्छ। केटाकेटीहरू घाम तापि-रहँदा प्रचक्कँट बादल देखा परी सूर्यलाई छेकिदियो भने उनीहरू यसो भनेर कराउँछन्, "हुंकन धाःसा तो ! तो ! थन धाःसा मतो, मतो ! तोजेला, मतो-येला स्वंगु योया पालिनिपा मागि ! नेपाल भाषा (नेवारी)का यो वाक्यहरूको माने "त्यता घाम लागेको छ, यता भने घाम लागेको छैन। घाम लाग्ने कि

भनाउने ? म स्वयम्भू देवताको बुट्टा पाउमा होइन्छु ।'' यसबाट हामीहरूले के कुरा बुझन सक्छौं भने मानिसहरूलाई बाल्यावस्था देखि नै छिउँदमा प्राकृ- हरूलाई न्यानो घाम दिन लगाउने स्वयम्भूमा आस्था राख्न सिकाइन्छ । परम्परागत चूडाकर्म (बरे छुयेगु), कुलको मर्म पवमा प्रतिस्थापन गर्ने संस्कार ( मायो लुयेगु ), पञ्चदान, भोजभतेर, दीक्षाकर्मंडलमा चैत्य ( थामं ग्वो वा थिमा ) नै उपस्थित वस्तुहरूमा प्रमुख हुन्छ र यसैले महत्वपूर्ण स्थान लिएको हुन्छ । दीक्षाकर्ममा – मप्राभिषेक, दशाभिषेक अथवा चतुर्दशाभिषेक जस्ता गुह्य दीक्षाकर्म विधिमा पनि पुरोहित उपाध्यायले स्वयम्भूको प्रतीक पञ्च बुद्ध बुद्ध भएको मुकुट शिरमा लाउँदछन् । सबै सूत्र र विहारहरूमा स्वयम्भूका पञ्च बुद्ध र नामसंगीति पाठलाई महत्वपूर्ण अग्रिमता दिइएको हुन्छ । स्वयम्भूको प्रतीक वागीश्वर धर्मधातुलाई चैत्यको रुपमा कमल फूलको टुप्पामा स्थापित गरिन्छ । चैत्यको केही अङ्गले महजयानको गुह्य ज्ञान – ''प्रज्ञोपाय'' – को रुप स्वयम्भू धर्मधातु र नामसंगीतिको सयोगलाई पनि जनाउँदछ । ढुङ्गाको कलामा पनि दर्शन अभिव्यक्त हुन्छ तथा जीउमा लगाइने गहनाहरूको रुपले पञ्च बुद्ध तिर संकेत गर्दछ । चण्डी ( टाउकोमा लगाइने गहना, नेवारीमा सुँस्वां ), कुण्डल ( कानमा लगाइने गहना ), कण्ठी ( घाँटीमा लगाइने गहना ), रोचक ( लट्किने गहना ) र मेखला ( कमरमा बाँध्ने गहना ) जस्ता 'पञ्च चुर्सा' भनिने गहना समूह पञ्च महाभूत ( पृथ्वी, जल, वायु तेज, आकाश – पञ्च तत्वको समूह ) को द्योतक हुन् । यी सबै देव र देवी पञ्च बुद्धका सन्तान हुन् ।

## पञ्च बुद्ध : तिनका सन्तान

### वैरोचनका सन्तान :

उष्णीष विजय, नामसंगीति, मारिचि, सिततापत्र, महासहस्त्र, प्रमुर्दनी, वज्रवाराही, अष्टमातृका, परमास्ववज्र, योगम्बर, कालचक्र, प्रज्ञापारमिता, महाप्रत्यङ्गिर, नैरात्मा, वज्रयोगिनी इत्यादि ।

### अक्षोभ्यका सन्तान :

चण्डमहारोषण हेरुक, बुद्ध कापाल, सम्वर, महामाया, हयग्रीव, यामारि, अचल, विघ्नान्तक, वज्रहुङ्कार, वज्रज्वाला, त्रैलोक्य विजय, वज्रधर, वज्रसत्व, भूतडामर ।

**रत्नसम्भवका सन्तान :**

वसुन्धरा, जम्भाल, महाप्रतिसार, रत्नडाकिनी, रत्नवीर, महाकाल, प्रसन्नतारा ।

**अमिताभका सन्तान :**

अवलोकितेश्वर ( पद्मपाणि ), महाबल, पद्मनीतारा, सप्तसतिक, हयग्रीव, कुरुकुल्ल, भृकुटी, महाशीतवती इत्यादि ।

**अमोघसिद्धिका सन्तान :**

वज्रामृता, खदिरावती तारा, महाश्रीतारा, वश्यतारा, श्वेततारा, आर्यतारा, पर्णशबरी, महामायूरी इत्यादि ।

## हारती

स्वयम्भू चैत्यको पश्चिमतिर पागोडा शैलीको दुई पाटे छाना भएको एउटा मन्दिर छ । यसमा 'हारती' ( जन–साधारणले 'अजिमा' भन्ने ) देवी स्थापित गरिएको छ । सुनको मोलम्बा लगाइएको छाना, जटिल काष्ठ कला, बौद्ध देवदेवीका मूर्तिहरू कुँदिएका धातुका पाताहरू र मसिना बुट्टाहरू कुँदिएका झ्यालहरूले यो मन्दिरलाई अतीव मनोहारी तुल्याउँछन् । यो मन्दिरको सम्बन्ध हिन्दु धर्मसित नभए तापनि यो केही केही हिन्दु जस्तो देखिन्छ । ढोका र झ्याल-हरू माथि रहेका केही केही त्रिकोणाकारका धातुका पाताहरूमा बुद्ध र उनको शासनका संरक्षकहरूका मूर्तिहरू कुँदिएका छन् । यी पाताहरूको टुप्पामा 'गरुड' भनिने एउटा ठूलो चरा र सर्पलाई टोकिरहेको 'छेपः' भनिने एउटा दैत्य जस्तो मूर्ति राखिएका छन् । 'गरुड' उत्तर दिशाका बुद्ध 'अमोघसिद्धि'– को वाहन हो । 'छेपः' चाहिँ काठमाडौं उपत्यकासित सम्बन्ध राख्ने इतिहास भएको एउटा रोचक जीव हो । मञ्जुश्रीले दहको पानी बाहिर पठाउँदा यो छेपःलाई यहीं बस्न दिएका थिए । अनुमान तः यो अझ उपत्यकाको कुनै अज्ञात स्थानमा जीवित रहेको छ । यो एक किसिमको क्रोधी देउता बनेको छ । जसरी इसाई परम्परामा धर्मोपदेशकहरूले पापात्माहरूलाई नरकको भयानकता बताएर सन्मार्गमा लगाउँथे त्यसरी नै एक प्रकारको क्रोधी देवता यो छेपःले आफ्नो भयङ्कर मूर्तिको शिकार बन्नु पर्ने त्रास देखाएर प्राणीहरूलाई सन्मार्ग तिर डोऱ्याउँछ । पाँच जना केटाकेटी बोकेर बसेको ढुङ्गे "हारती" मूर्ति कालो शालीग्राम ढुङ्गाको हो । वर्तमान मूर्तिको स्थापना ई. १८०० ताका भएको

थियो । यसभन्दा अगाडि त्यहीं पुरानो मूर्ति स्थापित थियो । त्यसको इतिहासको चर्चा गर्नु आवश्यक छ ।

महाराजाधिराज रणबहादुर शाहका तीन जना पत्नी थिए । ती मध्ये एकजनालाई उनी असाध्यै माया गर्दथे । यी त्यावै प्रेम गरिएकी रानी र उनका पुत्र बिफरले पक्राउ परे । आमा–छोरा दुवैको देहावसान भयो । राजाले "हारती" देउता माथि दोष लगाए । यसको कारण के थियो भने "हारती" बाल–रोगहरू, विशेष गरेर बिफरको निरोधक देवता मानिन्छिन् । राजाले यिनलाई मानव मलको धूप दिन लगाए । यो मूर्ति फनेर तिकियो, तोडियो र पर्गाकियो । हाल विद्यमान मूर्ति पछि स्थापित गरिएको थियो ।

यो देवताको विषयमा एउटा लोकप्रिय जनश्रुतिको कथा खूब चल–लाग्दो छ । हारती एकताका एउटी यक्षिणी थिइन् जसले केटाकेटीहरूको हरण गरी उधुम मचाएकी थिइन् । तिनीहरूलाई ठूलो महको स्वर्गमा लगी यिनी तिनीहरूसित बस–उठ गर्दथिन् । यसरी अपहृत भएका बालकबालिकाहरूको संख्या पाँच सय पुगेपछि तिनका आमाबाबुहरूले बुद्धलाई पुकारे । बुद्धले यो यक्षिणीको सबभन्दा मन परेको एउटा बच्चालाई अदृश्य बनाइराखे । यक्षिणी ज्यादै चिन्तित भई त्यो बच्चा फर्काउन बुद्धसंग बिन्तिभाउ गर्न लागिन् । बुद्ध–बाट आज्ञा भयो, " पाँच सय बच्चाहरू मध्ये एउटा मात्र हराउंदा त तिम्रो यतिको चित्त दुख्छ भने यी केटाकेटीहरूलाई हरण गरेर ल्याउंदा यिनका आमा-बाबुहरूको मन कति रोयो होला त्यो पनि त सोच्नु पर्छ नि । " बुद्धको यस वचनबाट यक्षिणीको मनमा ठूलो असर पर्‍यो । यिनले आफूबाट अरूहरूलाई कस्तो असह्य पीडा पर्न गएको रहेछ भन्ने महसूस गरिन् । त्यसपछि यिनले ती सबै बालकबालिकाहरूलाई फर्काइन् । यिनले त्यसैबेला देखि केटाकेटीहरूको रक्षिका बनिरहने प्रण गरिन् । तत्पश्चात् यिनी "हारती मां (माता)" कहिने देवी भइन् – 'हारती'–को माने 'हरण अर्थात् केटाकेटीहरूको रोग, दुःख हरण गर्ने ' र 'मां' – को माने 'आमा (माता)' हो । कहिले काहीं यिनी 'अजिमा' (बज्यै) को नाउंले पनि पुकारिन्छिन् ।

यहींनिर लङ्काको 'महावंश' – मा पनि 'हारती' नाउंकी यक्षिणीको उल्लेख भएको कुरा चाखलाग्दो हुन्छ । त्यस ग्रन्थमा एक जना यक्षिणी आफ्ना पाँच सय छोराहरू लिई हिमालयतिर गइन् भनिएको छ । यिनी र यिनका पाँच सय छोराहरूको साथमा "पाण्डक" नामका एक जना यक्ष पनि थिए । यहीं हिमा–लयमा हारतीले 'मुज्झन्तिक' स्थविरसंग प्रव्रज्या लिइन् भनिएकोछ । मुज्झन्तिक

स्थविर सम्राट अशोकको राज्यकाल (ई. पू. २६५–२२८) मा एउटा धार्मिक शिष्ट मण्डलको अध्यक्ष गरेर कास्मीर पठाइएका थिए ।

हारती माताले स्थानीय जनताबाट, विशेष गरेर स–साना केटाकेटीहरू भएका परिवारका मानिसहरूबाट दिनहुँ मनग्गे पूजा–उपासना पाउँदछिन् । प्रत्येक दिन यो देवीलाई खुशी पार्न उपयुक्त मानिएका हाँसको फुल, पाग, खाद्यान्न, रक्सी, घ्यूको बत्ती, धूप र यस्तै अरू नैवेधहरू चढाउन भक्तजनहरूका लामालामा लाम लाग्दछन् । भक्तजनहरूले के आशा लिएका हुन्छन् भने यो देवीलाई प्रसन्न पारी तिनबाट रक्षाको वरप्रसाद पाउन सकिन्छ । आफ्नो परिवारको सदस्य कुनै बच्चा बिरामी भएमा उनीहरू त्यसलाई हारती माताले छोप्न आएको भन्दछन् । अनि फुल, मिठाई इत्यादि चढाई तिनलाई प्रसन्न पारेमा तिनले त्यस बच्चालाई छाडेर जान्छिन् भन्ने विश्वास गरिन्छ । यो देउता अक्सर तेल घसिएर टिका लगाइएकी हुन्छिन् । यिनी श्रद्धापूर्वक चढाइएका मिठाई र फलफूलहरूले ढाकिएकी हुन्छिन् ।

दिनहुँ श्रद्धालु भक्तहरूले यो देउताको विस्तृत विधिपूर्वक गरिने एउटा विशिष्ठ पूजा ( "छा हायेके" गर्ने पूजा ) को निम्ति भोलिपल्टको लागि समय कम सुरक्षित गर्न स्वयम्भूका अधिकारीहरूसित अघिबाटै व्यवस्था मिलाउँदछन् । यिनीहरूले एक घण्टा जति लाग्ने यो "छा हायेके" गर्ने पूजा विधिको अनुष्ठान गर्न एक जना निजी पुरोहितलाई निम्त्याउँदछन् । यो पूजा विधि अलौकिक बुद्धहरूको पूजा विधि देखि मूलतया फरक छ । यो पूजा विधि शुद्ध महायानी बौद्ध तालको हो र वज्रयानी तान्त्रिक परम्पराहरू अनुसार सम्पन्न गरिन्छ । यो पूजा विधि गरिंदा उपासना गर्ने परिवारले खाद्य वस्तुहरू चढाउने, प्रसाद लिने, यज्ञोपवित ( पवित्र धागो ) ग्रहण गर्ने इत्यादि कार्यहरू भइरहन्छन् । यो निजी पूजा विधि चलिरहँदा अग्रिम अनुमति नलिएका उपासकहरूले भोग चढाउन सक्छन् तर विधिपूर्वक गरिने पूजामा अग्रिमता पाउँदैनन् ।

## स्वयम्भूको सार्थकता

स्वयम्भू नाथ प्रति दर्शाइएको सर्वोत्कृष्ठ सार्थकता अमिताभ बुद्धका मानस पुत्र मच्छेन्द्र नाथ ( श्री आर्यावलोकितेश्वर करुणामय अथवा नेवारीमा बुंगद्यो ) को रथको स्तम्भको टुप्पामा स्वयम्भूको स्वल्पाकृति राख्ने तथ्यबाट प्रदर्शित हुन्छ । प्रत्येक बाह्र वर्षमा सम्यक गर्ने, सम्यक गुठीले समारोह

मनाउँदा पूजा थाप्न ल्याइने गरी देव देवीको आफ्नो स्वयम्भू महाचैत्यको स्थान सबभन्दा अघिल्लो हुन्छ । माटोका ससाना स्तूपाकार चैत्य (नेवारी-मा लुचि थो) हरू बनाउनु पुण्य कमाउने उत्तम कार्य हो भन्ने परम्परागत विश्वास पनि जनतामा रहेको छ । बाहा पूजा (उपासक–उपासिकाहरू ताँता लागेर क्रमैसँग एक–पछि अर्को बाहालमा गई पूजा गर्ने) गर्दा स्वयम्भूबाट शुरू गर्नु पर्दछ । मच्छेन्द्रको पूजा–उपासना बौद्धहरूले मात्र होइन हिन्दुहरूले पनि गर्छन् । पौराणिक कथाअनुसार श्री पशुपति नाथले आफूमाई ध्वस्त पार्न खोज्ने विरूपाक्षको रिसबाट बच्न पञ्च बुद्ध भएको मुकुट लगाई स्वयम्भूप्रति श्रद्धाभक्ति दर्शाएका थिए । विरूपाक्षले पशुपति नाथको शिरमा पञ्च बुद्ध भएको मुकुट देखेर उनलाई कुनै अनिष्ट नगरी पछि हटे । विरूपाक्षले यसो गर्नुको मतलब स्वयम्भू महाचैत्यप्रति हार्दिक श्रद्धाभक्ति देखाउनु हो । अहिलेसम्म पनि पशुपति नाथलाई वर्षको एक पल्ट कार्तिक शुक्ल अष्टमी 'मुखाष्टमी' (नेवारीमा 'मुख' भन्नाले 'मुकुट', टोपी हुन्छ) भनिने दिन (अक्सर नवम्बर १५ तारीख तिर पर्दछ) मा पञ्च बुद्ध भएको मुकुट (मुखः) लगाइन्छ । बूढानीलकण्ठको मुकुटमा अक्षोभ्यको मूर्ति पाइन्छ । बूढानीलकण्ठ भन्ने शब्द 'बुद्धनीलकण्ठ नारायण'–को अपभ्रंशित रूप हो । यसबाट स्वयम्भू महाचैत्यप्रति श्रद्धाभाव दर्शाइएको सङ्केत मिल्दछ । यथार्थमा नेपालमा हिन्दु र बौद्धहरूले संयुक्त रूपले हिन्दु वा बौद्ध देवदेवीहरूको उपासना गर्दछन् जसबाट हिन्दु र बौद्धहरूको बीचमा शान्ति र सद्भावना कायम भएको छ । धार्मिक सहिष्णुताको दृष्टान्त राजा सिद्धि नरसिंह मल्लद्वारा निर्मित पाटनस्थित कृष्ण मन्दिरमा पाइन्छ— जसमा कृष्ण मूर्ति, शिवलिङ्ग र अवलोकितेश्वर एकसाथ स्थापना गरिराखिएको पाइन्थ्यो । मूर्तिहरू हाल यिनीहरूको मौलिक स्थानमा राखिएका छैनन् । यिनीहरू चोरिएका छन् भन्ने विश्वास गरिन्छ । अगाडि चर्चा गरिए बमोजिम वास्तुनिर्माण कलाबाट पनि बौद्ध प्रभाव झल्किन्छ । उदाहरणार्थ, पाटन दरबारको सुनको ढ्यालमा अमिताभ बुद्धका मानस पुत्र पद्मपाणि कुँदिएको छ । कैयौं विहारहरूमा स्वयम्भू चैत्यका प्रतिमूर्तिहरू स्थापित भइराखेका छन्– उदाहरणार्थ, यता बाहाल नं छ । यता बाहालमा यतापाःद्योको सामुन्ने अर्थात् चोकको बीचमा एउटा सानो स्वयम्भू चैत्य संस्थापित गरिएको छ । स्वयम्भूप्रति श्रद्धाभाव देखाउने तरीका यही हो । आजुतपुलि (अर्थात् कुलको मूलीले लाउने टोपी) मा पञ्च बुद्धका मूर्तिहरू हुन्छन् । रीतिथिति, कर्मकाण्ड, विहार (बाहाल), (हिन्दु मन्दिरहरूमा समेत पाइने) वास्तु निर्माण कला इत्यादिद्वारा समाजमा स्वयम्भू महाचैत्यले जमाइराखेको प्रभाव सम्बन्धी अगाडि वर्णित प्रमाणबाट के कुरा स्पष्ट हुन्छ भने नेपाल जनताको स्वयम्भूमा अगाध आस्था छ ।

*

तीनै युगका सबै बुद्धहरूको विषयमा जानकारी लिन चाहनुहुन्छ भने धर्म लोकको स्वभावको विचार राख्नुस् । सबै वस्तुहरू मनद्वारा सिर्जिएका हुन् ।

--अवतंसक सूत्र

मुद्रकः- सृजना छापाखाना पचली टेकू, काठमाडौं ।